


# मगर चलचित्रकर्मी संघ
# Magar Film Maker's Association
## को विधान
## २०६६

### प्रस्तावना

नेपाली समाजमा अनादिकालदेखि मौलिक भाषा, संस्कृति, रितिरिवाज, परम्पराका धनि मगर जातिको लेख्य इतिहास विकसित नभएको अवस्था र अझ कलाको अत्याधुनिक चलचित्र विधामा मगर समाज अझ पछाडि रहेको हुँदा खोज, अनुसन्धान गरि आफ्नो भाषा, संस्कृति, धर्म र रीतिरिवाजको संरक्षण, सम्बर्द्धन एवम् जगेर्ना तथा समयानुकुल परिमार्जन र विकास गर्न आवश्यकता महसुस गरि गैरसरकारी क्षेत्रमा जनहितकारी एवम् मुनाफा रहित मगर चलचित्रकर्मी संघ नामक संस्था स्थापना गर्न वाञ्छनिय भएकोले यो संस्था स्थापना गरिएको छ। जसले चलचित्रको माध्यमवाट राष्ट्रिय र अन्तर्राष्ट्रिय क्षेत्रमा समेत प्रचार प्रसार गरि मुलुकको कला र संस्कृतिको विकासलाई टेवा पुऱ्याउँदै समृद्ध बनाउने प्रयास गर्ने छ। यो संस्थाले मुलुकमा रहेको अन्य जाति, जनजातिको भाषा, कला र संस्कृतिको पक्षमा समेत सह-सम्बन्ध स्थापित गर्दै कार्य गर्ने छ।

## परिच्छेद - १
## प्रारम्भ

१. **संस्थाको नाम :**

यस संस्थाको नाम "मगर चलचित्रकर्मी संघ" हुनेछ। अंग्रेजीमा Magar Film Makers' Association रहने छ। छोटकरीमा MFA हुने छ।

क) **संस्थाको कार्यालय रहने ठेगाना :** यस संस्थाको कार्यालय काठमाडौं जिल्ला, कलंकी, वाड नं. १४, शान्तिनगर टोलमा रहने छ।

ख) **संस्थाको कार्य क्षेत्र :** यस संस्थाको कार्य क्षेत्र ~~नेपाल भित्र विभिन्न~~ काठमाडौं जिल्ला मा रहनेछ ~~तथा विदेशमा पनि स्वीकृत लिएर सञ्चालन गर्न सकिने छ।~~ सम्बन्धित स्थानिय अधिकारीको स्वीकृति लिई नेपाल राज्यभर क्षेत्र विस्तार गर्न सकिनेछ।

ग) **प्रारम्भ :** यो विधान नेपाल सरकारबाट स्वीकृत भएको मितिदेखि प्रारम्भ हुनेछ।

घ) **संस्थाको अस्तित्व :** यो संस्था एक अविछिन्न उत्तराधिकारवाला, संगठित, स्वशासित, गैरनाफामूलक, गैरराजनैतिक, गैरसरकारी सामाजिक संस्था हुनेछ। संस्थाबाट आफ्नो उद्देश्य बाहेक अन्य आय आर्जन गर्ने तथा कुनै प्रकारको शुल्क लिई वा नलिई परामर्श प्रदान गर्ने काम गरिने छैन।

२. **परिभाषा**

विषय वा प्रसंगले अर्को अर्थ नलागेमा यस विधानमा,

क) 'संस्था' भन्नाले संस्था दर्ता ऐन २०३४ अन्तर्गत स्थापित मगर चलचित्रकर्मी संघलाई जनाउने छ।

ख) 'विधान' भन्नाले मगर चलचित्रकर्मी संघको विधान २०६६ लाई बुझाउने छ।

ग) 'कार्यकारिणी समिति' भन्नाले संस्थाको कार्य सम्पादनका लागि यस विधान बमोजिम महाधिवेशनमा भाग लिएका सदस्यहरू मध्येबाट निर्वाचित समितिलाई सम्झनु पर्दछ।

घ) 'सदस्य' भन्नाले परिच्छेद ३ अनुसार सदस्य प्राप्त व्यक्तिलाई जनाउने छ र सो शब्दले अध्यक्ष

लगायत पदाधिकारी र सदस्यलाई जनाउँदछ।

ङ) 'कार्यालय' भन्नाले यस संस्थाको कार्यालयलाई जनाउनेछ।

च) 'नियम/विनियम' भन्नाले यस विधानको अधिनमा रही बनेको नियम/विनियमलाई जनाउँदछ।

छ) 'स्थानीय अधिकारी' भन्नाले प्रमुख जिल्ला अधिकारीलाई जनाउने छ।

ज) 'सभा' भन्नाले यस विधान बमोजिम बसेको राष्ट्रिय अधिवेशन र केन्द्रीय महाधिवेशनलाई जनाउने छ।

झ) 'मगर' भन्नाले नेपाल मगर संघबाट मान्यता प्राप्त मगर भित्रको सबै उपथरहरूलाई बुझाउने छ।

ञ) 'मगर चलचित्र' भन्नाले मगर दुट, पाङ, काईके, म्याग्दी, बाग्लुङ्ग, पर्वत, अर्घाखाची, प्यूठान, गुल्मी आदिमा बोलिने भाषा, मगर बिषयबस्तु, परम्परा, धर्म, ईतिहास, मुद्दा, कथा, भूगोल, भेषभूषा र कला संस्कृतिमा आधारित चलचित्रलाई भनिनेछ।

ट) 'मगर चलचित्रकर्मी' भन्नाले मगर चलचित्र निर्माण, विकास र प्रवर्द्धनमा योगदान पुऱ्याउने मगर व्यक्तित्वहरूलाई जनाउनेछ।

ठ) 'आर्थिक वर्ष' भन्नाले श्रावण १ गतेदेखि अर्को वर्षको असार मसान्तसम्मलाई आर्थिक वर्ष मानिने छ।

३. संस्थाको छाप र चिन्ह

प्रचलित व्यवस्थाको प्रतिकूल नहुने गरी संस्थाको एउटा छुट्टै छाप र चिन्ह हुनेछ। मगर महिलाहरूले लगाउने पटुकाको रंग हरियो, पहेंलो र निलो रंग- आदिवासी जनजातिहरूको चिन्ह प्वाँखभित्र चलचित्रको रिल माथि तल र बीचमा अंग्रेजीमा M लेखिएको अक्षर रहने छ। र, छेउमा अंग्रेजीमा Magar Film Makers' Association लेखिएको हुनेछ। जसको नमूना अनुसूची १ मा उल्लेख छ।

## परिच्छेद - २
## उद्देश्यहरू

४. संस्थाका उद्देश्यहरू

प्रचलित नेपाल कानून, नेपाल सरकार ~~र नेपाल मगर संघको~~ नीति, निर्देशनको अधिनमा रही सम्बन्धित निकायसँग सम्बन्ध राखी कार्यक्रम सञ्चालन गर्ने गरी यस संस्थाको निम्न उद्देश्य रहने छ–

क) मगर चलचित्रकर्मीहरूको लिखित अभिलेख राख्ने कार्य गर्ने छ।

ख) कुरिति, कुसंस्कार र विसंगतिका विरूद्ध सामाजिक चेतनामुलक कार्यक्रम संचालन गर्ने/गराउने छ।

ग) मगर समाजको कला, शीप र प्रतिभालाई सम्वर्द्धन गर्दै मगर चलचित्रकर्मीहरूको क्षमता अभिवृद्धिको लागि ठोस कार्यक्रम संचालन गर्ने छ।

घ) लोपन्मुख मगर भाषा, संस्कृति, संस्कार, मौलिक कला र भेषभूषाको खोजपूर्ण अध्ययन ~~अनुसन्धान~~ गरी चलचित्रको माध्यमबाट प्रचार प्रसार तथा प्रवर्द्धन गर्ने छ।



Scanned with CamScanner

ङ) मगर भाषा, कला र संस्कृतिसँग सम्बन्धित राष्ट्रिय तथा अन्तर्राष्ट्रिय संघ, संस्थासँग समन्वय गरी संस्थाले स्मारिका प्रकाशन तथा चलचित्र महोत्सव गर्ने छ।

च) अन्य सामाजिक संघ-संस्थासँग सहयोगी तथा मैत्रीपूर्णभाव राख्ने छ।

छ) निर्माण भएका मगर चलचित्रको विकास र सम्बर्द्धनको लागि उचित बजार व्यवस्थापन प्रवर्द्धन गर्ने छ।

ज) मगर समाजका चलचित्र क्षेत्रका कलाकर्मीहरूलाई प्रशिक्षणको व्यवस्था गर्दै प्रतिभाशाली युवाहरूलाई प्रोत्साहन स्वरूप पुरस्कार प्रदान गर्ने छ।

ञ) अग्रज मगर चलचित्रकर्मीहरूलाई सम्मान गर्दै नवोदित प्रतिभाहरूलाई पुरस्कृत गर्ने छ।

ट) राष्ट्रिय, अन्तर्राष्ट्रिय क्षेत्रमा कला र संस्कृति वृद्धि हुने कार्यक्रम गर्दै राष्ट्रिय सर्वोपरी हितमा रहने सार्वजनिक सरोकारका विषयहरूको विविध कार्यक्रममा संस्था सहभागी हुने छ।

५. **संस्थाको उद्देश्य प्राप्तिका लागि गरिने कार्यहरू**

यस संस्थाले उपरोक्त उद्देश्यहरू प्राप्त गर्न देहायका कार्यहरू गर्ने छ– संस्थाले प्रचलित नेपाल कानून बमोजिम सम्बन्धित निकायबाट अनुमति वा इजाजत प्राप्त गरि आफ्नो उद्देश्यहरू कार्यान्वयन गर्नेछ।

क) मगर चलचित्रकर्मीहरूको भेटघाटको थलो र हकहितको लागि आवश्यक काम गर्ने छ।

ख) संस्थाले व्यक्ति समान चल-अचल सम्पत्ति खरिद-बिक्री गर्न वा प्राप्त गर्न, भोग गर्न सक्ने छ।

ग) संस्थाको उद्देश्य प्राप्तिको लागि राष्ट्रिय/अन्तर्राष्ट्रिय संघ-संस्था एवं व्यक्तिहरूलाई आर्थिक, भौतिक र नैतिक सहयोग माग गर्ने छ।

घ) मगर चलचित्रको संरक्षण सम्बर्द्धन तथा जगेर्ना गर्न वार्षिक वा द्वय वार्षिक रूपमा मगर चलचित्र महोत्सव गर्ने छ।

ङ) मगरहरूको खोज एवं परम्परागत धार्मिक पहिचान गर्न, गराउन, सेमिनार, गोष्ठी, भेला तथा छलफल कार्यक्रम मगर चलचित्रकर्मीसँग गर्ने छ।

च) संस्थालाई आवश्यक पर्ने कार्यालय भाडा वा लिजमा लिने आवश्यक सामग्री खरिद-बिक्री गर्न, भवन निर्माण गर्न सक्ने छ।

छ) संस्था वा कार्यालयलाई आवश्यक कर्मचारी नियुक्त गर्न तथा सेवा शर्त निर्धारण गर्ने छ।

ज) संस्थाको तर्फबाट कसै उपर नालिस उजुर गर्न वा कसैले संस्था उपर नालिस उजुर गरेमा प्रतिवाद गर्न सक्ने छ।

## परिच्छेद - ३
## सदस्यता

६. **सदस्यताको किसिम**

क) **साधारण सदस्य :** दफा ७ बमोजिम योग्यता पुगेको कुनै पनि व्यक्तिले दफा १० बमोजिम शुल्क तिरी साधारण सदस्य बन्न सक्नेछ। साधारण सदस्यको अवधि १ वर्षको हुनेछ। अवधि समाप्त भएपछि अर्को अवधिको लागि सदस्यता नविकरण गर्नु पर्ने छ। साधारण सदस्यता यसै समितिले वितरण गर्ने, छ। निम्न व्यक्तिहरूलाई मगर चलचित्रकर्मी संघको सदस्यता

प्रदान गरिने छ।

क) मगर चलचित्र वा वृत्तचित्र कम्तीमा एउटा सार्वजनिक प्रदर्शन भएको हुनु पर्ने छ।

ख) निर्देशक (सार्वजनिक प्रदर्शन भएको)

ग) निर्माता

घ) चलचित्र स्कृप्ट लेखक (चलचित्र लेखन)

ङ) कलाकार (चलचित्र क्याप्सनमा नाम आएको वा संवाद बोलेको व्यक्ति)

च) प्राविधिक (क्यामराम्यान, साउण्ड म्यान, लाइटम्यान, मेकअपम्यान, सम्पादन, रेकर्डिष्ट

छ) चलचित्र संगीतकार

ज) चलचित्र गायक/गायिकाहरू

झ) वितरक कम्पनीहरू (दर्तावाला)

ञ) चलचित्र गीतकार, नेपाली नागरिक हुनुपर्ने।

ख) **आजीवन सदस्य** : संस्थाको विकासको लागि विशेष सहयोग तथा योगदान पुऱ्याउने व्यक्तिहरूलाई तोकिएको प्रक्रिया अन्तर्गत आजीवन सदस्यता प्रदान गरिने छ। यस्ता सदस्यहरूलाई केन्द्रीय समितिले प्रदान गर्न सक्ने छ।

ग) **मानार्थ सदस्य** : मगर चलचित्रकर्मी संघलाई आर्थिक, नैतिक एवं भौतिक रूपले ठोस योगदान पुऱ्याउने कुनै पनि व्यक्ति, राष्ट्रिय तथा अन्तर्राष्ट्रिय संघ-संस्थालाई केन्द्रीय समितिको सिफारिसमा मानार्थ सदस्य एवम् संस्थागत सदस्य प्रदान गर्न सकिने छ।

घ) **संस्थापक सदस्य** : यो संस्था दर्ता गर्ने बखत यस विधानमा हस्ताक्षर गर्ने व्यक्तिहरू संस्थापक सदस्य हुनेछन्। संस्थापक सदस्यहरूले साधारण वा आजीवन सदस्यता लिएर विधान बमोजिमको शुल्क बुझाउनु पर्नेछ।

७. **सदस्यता बन्नको लागि योग्यता**

क) राष्ट्रको हित र राष्ट्रको विकासमा निरन्तर लागिरहेको १६ वर्ष उमेर पुगेको मगर समाजभित्रबाट मगर चलचित्र क्षेत्रमा काम गरेको नेपाली नागरिक हुनुपर्ने छ।

ख) विधानलाई पालना गर्ने र निःस्वार्थ सामाजिक सेवाको भावना भएको व्यक्ति।

ग) फौजदारी अभियोगमा दोषी प्रमाणित नभएको।

घ) मानसिक सन्तुलन ठीक भएको।

ङ) अनुचित कार्य वा भ्रष्ट आचरण नभएको।

८. **देहायको अवस्थामा कुनै पनि व्यक्ति संस्थाको सदस्य बन्न अयोग्य हुनेछ।**

क) मगर समाज भित्रबाट १६ वर्ष उमेर नपुगेको।

ख) मगज बिग्रेको वा बौलाएको।

ग) मगर समाज भित्रबाट चलचित्र क्षेत्रमा नलागेको व्यक्ति।

घ) कुनै प्रकारले चोरी, ठगी, किर्ते वा जालझेली गरेका वा आफ्नो जिम्माको धनमाल अनाधिकृत तवरले मासेको वा दुरूपयोग गरेको वा भ्रष्टाचार गरेको अभियोगमा अदालतबाट कसुरदार ठहर भरी सजाय पाई सजाय पाएको मितिले १ वर्षभित्र।

ङ) संघको व्यवस्थापनमा नीजि स्वार्थ भएको वा यस संघको उद्देश्यप्रति प्रतिवद्ध नरहेको ।

च) सदस्यता शुल्क बुझाउन बाँकी भएको ।

## ९. सदस्यताको समाप्ति

१) देहायको अवस्थामा कुनै व्यक्ति संस्थाको सदस्यतामा बहाल रहने छैन ।

क) दफा ८ (क) बमोजिम सदस्य पदमा नियुक्त हुन नसक्ने भएमा ।

ख) महाधिवेशन, विशेष महाधिवेशन, अधिवेशन वा जिल्लाको हकमा जिल्ला अधिवेशन वा साधारण सभाको ७५% को बहुमतले संघको सदस्य पदवाट हटाउने प्रस्ताव पास गरेमा ।

ग) सदस्यले आफ्नो पदबाट दिएको राजीनामा स्वीकृत भएमा ।

घ) संस्थाको काम कारवाहीमा वेइमानी वा वदनियत गरेको कुरा अदालतवाट प्रमाणित भएमा ।

ङ) कुनै सदस्यको मृत्यु भएमा, सदस्यता नविकरण नगराएमा र विना सूचना लगातार ३ पटकसम्म कार्य समितिको बैठकमा अनुपस्थित भएमा कार्यकारी समितिको सदस्यता कायम रहने छैन । तर साधारण सदस्य भने रहने छ ।

च) संस्थाको विघटन भई खारेज भएमा ।

२) कुनै व्यक्ति संस्थाको सदस्यता प्राप्त गर्न वा बहाल रहन अयोग्य ठहऱ्याउनु भन्दा अघि संस्थाले निजलाई सो कुराको सूचना दिई सफाईको सबुत पेश गर्ने मौका दिनु पर्नेछ ।

## १०. सदस्यता प्रदान गर्ने विधि र सदस्यता शुल्क

यस संस्थाको सदस्यता लिन कुनै पनि व्यक्तिले निवेदन कार्यसमिति समक्ष पेश गरेमा कार्य समितिको निर्णयले उचित ठहऱ्याएमा तल उल्लेखित शुल्क लिएर सदस्यता प्रदान गर्ने छ ।

१) **साधारण सदस्य**

क) साधारण सदस्यता प्राप्त गर्न चाहने व्यक्तिले प्रवेश शुल्क रू. ५०१।- बुझाई तोकिएको प्रक्रिया अनुसार आवेदन पेश गर्नेलाई साधारण सदस्यता प्रदान गर्न सकिनेछ ।

ख) त्यस्ता साधारण सदस्यले वार्षिक नविकरण शुल्क रू. २०१।- बुझाउनु पर्ने छ । समयमा नविकरण नगरेमा थप दस्तुर रू. ५१।- लाग्ने छ ।

ग) संस्थापक सदस्यहरूले विधानमा उल्लेखित भए बमोजिम शुल्क बुझाई साधारण सदस्य वा आजीवन सदस्यता प्राप्त गर्न सक्नेछन् । असार मसान्त

घ) साधारण सदस्यता प्राप्त गर्ने सदस्यले प्रत्येक वर्ष ~~जेष्ठ १५~~ भित्र नविकरण गराई सक्नुपर्ने छ । त्यसपछिको हकमा तोकिए बमोजिमको थप दस्तुर बुझाई नविकरण गर्न सकिने छ ।

२) **आजीवन सदस्य :** संस्थामा एकमुष्ट रू. १०,०००।- बुझाई तोकिएको प्रक्रिया अन्तर्गत आवेदन दिने व्यक्तिहरूलाई कार्य समितिको निर्णयले आजीवन सदस्यता प्रदान गर्न सक्नेछ । संस्थापक सदस्यहरूको हकमा रू. ५,०००।- अनिवार्य बुझाउनु पर्नेछ ।

३) **मानार्थ सदस्य :** केन्द्रीय समितिको निर्णयले उपयुक्त ठानेको मगर समाजभित्रबाट समाजसेवी, विशिष्ट व्यक्ति तथा प्रतिष्ठित नागरिकहरूलाई मानार्थ सदस्यता प्रदान गर्न सक्नेछ । यसको लागि शुल्क लाग्ने छैन । तर मानार्थ सदस्यको मताधिकार रहने छैन ।

४) **संस्थापक सदस्य :**

Scanned with CamScanner

क) यो संस्था दर्ता हुँदाको बखतको तदर्थ समितिका पदाधिकारी र सदस्यहरू संस्थापक सदस्य रहनेछन् ।

ख) संस्थापक सदस्यहरूले एकमुष्ट रूपमा रू. ५,०००।- शुल्क बुझाई अनिवार्य रूपमा आजीवन सदस्य बुझाउनु पर्ने छ ।

५) कुनै आवेदकलाई सदस्यता नदिने निर्णय गरेमा सोको कारण सहितको जानकारी आवेदकलाई दिइने छ ।

६) सबै सदस्यहरूले यस विधान र विधान अन्तर्गत बनेको नियम र विनियम बमोजिम भएको व्यवस्थाको पालना गर्नुपर्ने छ ।

७) संस्थाले प्रदान गरेको दफा १० को उप-दफा १, २, ३, र ४ अनुसारको सदस्यहरूको अभिलेख तोकिएको ढाँचामा छुट्टै पुस्तिका बनाएर राखिने छ ।

## परिच्छेद - ४
## राष्ट्रिय महाधिवेशन, कार्यसमिति र बैठक सम्बन्धी व्यवस्था

**११. राष्ट्रिय महाधिवेशनको गठन :**

१) यस संस्थाको विधानको दफा १० (३) अनुसार सदस्यता प्राप्त गर्ने मानार्थ सदस्यहरू बाहेक अन्य सदस्यहरू रहेको यस संस्थाको राष्ट्रिय महाधिवेशन हुनेछ । मानार्थ सदस्यहरू आमन्त्रित हुनेछन् । राष्ट्रिय महाधिवेशन संस्थाको सर्वोच्च अंग हुनेछ ।

२) यस संस्थाको राष्ट्रिय महाधिवेशन देहाय बमोजिम हुने छ–

क) राष्ट्रिय महाधिवेशन : केन्द्रीय समितिको आयोजनामा राष्ट्रिय महाधिवेशन ~~२~~ प्रत्येक वर्षमा १ पटक बस्ने छ ।

ख) केन्द्रीय समिति, केन्द्रीय सल्लाहकारहरू, अञ्चल समिति र जिल्ला समितिले छनोट गरेका प्रतिनिधिहरू महाधिवेशन प्रतिनिधि हुनेछन् ।

ग) जिल्ला र अञ्चल समन्वय समितिबाट ५ जना महाधिवेशन प्रतिनिधि रहने छन् ।

घ) जिल्लामा चलचित्रकर्मीहरू कम भई जिल्ला समिति बन्न नसक्ने अवस्था रहेमा मात्र अञ्चल समन्वय समिति निर्माण गरिने छ । अन्यथा जिल्ला समिति नै गठन गरिने छ ।

ङ) विशेष राष्ट्रिय महाधिवेशन : केन्द्रीय समितिको कुल सदस्य संख्याको एक चौथाई सदस्य वा गठित जिल्ला समितिका ~~[illegible]~~ २५ प्रतिशतले कारण जनाई विशेष राष्ट्रिय महाधिवेशन माग गरेमा विशेष राष्ट्रिय महाधिवेशन कम्तीमा ~~[illegible]~~ ६० दिनभित्र अनिवार्य रूपमा बोलाउनु पर्ने छ । तर राष्ट्रिय महाधिवेशन वा विशेष राष्ट्रिय महाधिवेशन बसेको ६ महिनाभित्र पुनः विशेष राष्ट्रिय महाधिवेशन बस्न सक्ने छैन ।

३) यस संस्थाको राष्ट्रिय महाधिवेशन गर्नको लागि कम्तिमा ~~[illegible]~~ १५ दिन अगावै र विशेष राष्ट्रिय महाधिवेशन गर्नको लागि कम्तिमा ~~[illegible]~~ ६० दिन अगावै महाधिवेशन हुने स्थान, मिति, समय र छलफल गर्ने विषय खोली सबै केन्द्रीय प्रतिनिधिहरूलाई अनिवार्य रूपले सूचना दिइने छ ।

४) उप-दफा (४) बमोजिम बोलाइएको राष्ट्रिय महाधिवेशन, अधिवेशन वा विशेष राष्ट्रिय महाधिवेशनमा विधानको दफा १८ बमोजिमको गणपूरक संख्या नपुगी सभा हुन नसकेमा कम्तिमा ७ दिनको म्याद दिई पुनः राष्ट्रिय महाधिवेशन, अधिवेशन वा विशेष राष्ट्रिय महाधिवेशन बोलाइने छ ।

५) राष्ट्रिय महाधिवेशन, राष्ट्रिय सम्मेलन (अधिवेशन) र विशेष राष्ट्रिय महाधिवेशनको छुट्टाछुट्टै

निर्णय पुस्तिका राखिने छ।

६) संस्थाको राष्ट्रिय महाधिवेशन हुने वर्ष संस्थाले राष्ट्रिय सम्मेलन (अधिवेशन) बोलाउने छैन। राष्ट्रिय सम्मेलन (अधिवेशन) ले गर्ने काम उक्त राष्ट्रिय महाधिवेशनले गर्ने छ।

१२. **केन्द्रीय अधिवेशनको काम, कर्तव्य र अधिकार**

केन्द्रीय अधिवेशनको काम, कर्तव्य र अधिकार देहाय बमोजिम हुनेछ

क) कार्य समितिले पेश गरेको योजना, कार्यक्रमहरू र वार्षिक बजेट पारित गर्ने।

ख) लेखा परीक्षकबाट प्राप्त भएको वार्षिक लेखापरीक्षण-प्रतिवेदनमाथि छलफल गरी अनुमोदन गर्ने र लेखापरीक्षण प्रतिवेदनबाट देखिएका अनियमित बेरुजु रकमहरू माथि छलफल गरी नियमित गर्न नमिल्ने बेरुजु रकमहरू असुल उपर गरी फछ्र्यौट गर्नको लागि कार्य समितिलाई निर्देशन दिने। आगामी वर्षका लागि लेखा परीक्षक नियुक्ति गर्ने।

ग) संस्थाको वार्षिक कार्य, प्रगति विवरण र संस्थाको कार्यहरूको मूल्याङ्कन गरी कार्य समितिलाई आवश्यक निर्देशन दिने।

घ) संस्थाको केन्द्रीय कार्य समितिका पदाधिकारीहरूको पदावधि पुगेको अवस्थामा विधान वमोजिमको प्रक्रिया अन्तर्गत रही निर्वाचन गर्ने।

ङ) कार्यसमितिद्वारा पेश भएको विधान संशोधन, नियम तथा विनियम स्वीकृत गर्ने।

च) मानार्थ सदस्यता प्रदान गर्ने।

छ) केन्द्रीय कार्य समितिबाट संस्थाको हित अनुकुल भएका काम-कारवाहीहरूको औचित्य हेरी अनुमोदन गर्ने।

ज) संस्थाको आफ्नै आन्तरिक स्रोतबाट व्यहोर्ने गरी केन्द्रीय कार्यसमितिले पेश गरेको कर्मचारीहरूको दरबन्दी, पारिश्रमिक, भत्ता तथा अन्य सुविधाहरूमा आवश्यकता अनुरूप स्वीकृति प्रदान गर्ने।

परिच्छेद - ५

## केन्द्रीय कार्य समितिको गठन, पदाधिकारीहरूको काम, कर्तव्य र अधिकार

१३. **केन्द्रीय कार्य समितिको गठन**

क) कार्य समितिको गठन राष्ट्रिय महाधिवेशनबाट हुनेछ। देहाय बमोजिम पदाधिकारी तथा सदस्य रहेको केन्द्रीय कार्य समिति रहने छ।

| | |
|---|---|
| अध्यक्ष | १ |
| उपाध्यक्ष | १ |
| महासचिव | १ |
| सचिव | १ |
| कोषाध्यक्ष | १ |
| सदस्यहरू | ६ |

ख) यस संस्थामा ११ जनाको केन्द्रीय कार्यसमिति हुनेछ।

ग) केन्द्रीय कार्यसमितिको कार्यकाल ४ वर्षको हुनेछ ।

घ) राष्ट्रिय महाधिवेशन हुनुभन्दा अगावै कार्य समितिमा रहेको कुनै सदस्यको पद रिक्त हुन आएमा बाँकी अवधिका लागि कार्य समितिको सदस्यको मनोनयन गर्ने वा नगर्ने भन्ने निर्णय केन्द्रीय कार्य समितिमा रहने छ । यसरी सो पदमा मनोनयन भएमा त्यो सदस्यको कार्यकाल बाँकी रहेको कार्यकालसम्मको लागि मात्र हुने छ ।

ङ) केन्द्रीय कार्य समितिको बैठक आवश्यकता अनुसार अध्यक्षले बोलाउने छ । तर केन्द्रीय कार्य समितिको पदाधिकारीहरूको जम्मा संख्याको ५१ प्रतिशतले बैठक बोलाउन माग गरेमा अध्यक्षले कार्यसमितिको बैठक तुरुन्त बोलाउनु पर्नेछ ।

च) केन्द्रीय कार्य समितिको बैठकमा सदस्य स्वयम् उपस्थित हुनुपर्ने छ ।

छ) सदस्यहरूको कूल संख्याको ५१ प्रतिशत सदस्यहरू उपस्थित नभै केन्द्रीय कार्य समितिको बैठक बस्ने छैन ।

ज) केन्द्रीय कार्य समितिको बैठकमा अध्यक्षले अध्यक्षता गर्ने छ र निजको अनुपस्थितिमा उपाध्यक्षले र उपाध्यक्षको पनि अनुपस्थिति रहेमा बैठकमा उपस्थित भएका सदस्यहरूले छानेको वा जेष्ठ सदस्यले अध्यक्षता गर्ने छ ।

झ) केन्द्रीय कार्य समितिको बैठकमा बहुमतको निर्णय मान्य हुनेछ । तर मत बराबर भएमा अध्यक्षले निर्णायक मत दिन सक्नेछ ।

ण) केन्द्रीय कार्य समितिको बैठकमा छलफल भएको विषयहरूको छुट्टै निर्णय कितावमा लेखी राखिनेछ र सो निर्णय विवरणमा बैठकमा उपस्थित सम्पूर्ण सदस्यहरूले सही गर्नु पर्ने छ । तर निर्णयमा असहमति जनाउनेहरूले कैफियत खोली सही गर्नु पर्ने छ ।

त) माथिका दफाहरूमा जुनसुकै कुरा लेखिएको भएतापनि केन्द्रीय कार्य समितिले गर्न पाउने कुनै कार्यको सम्बन्धमा कार्य समितिको सबै पदाधिकारीहरू लिखित रूपमा सहमत भएमा त्यस्तो सहमतिलाई निर्णय पुस्तिकामा संलग्न गरी त्यस्तो काम बैठक बिना पनि गर्न सकिनेछ । उपरोक्त बमोजिमको सहमतिलाई केन्द्रीय कार्य समितिको बैठकको निर्णय सरह मानिनेछ ।

थ) संस्थाले गर्ने सम्पूर्ण कार्यहरू केन्द्रीय कार्यसमितिको निर्णयबाट हुनेछ ।

द) केन्द्रीय कार्य समितिको नामावली अनुसूची २ मा उल्लेख छ ।

**१४. केन्द्रीय कार्य समितिको काम, कर्तव्य र अधिकार**

१) संस्थाको आगामी वर्षको वार्षिक कार्यक्रम तथा अनुमानित बजेट बनाई महाधिवेशन वा अधिवेशनमा प्रस्तुत गर्ने ।

२) विधान बमोजिमको व्यवस्था पालना गरी महाधिवेशन वा राष्ट्रिय सम्मेलनको निर्णय कार्यान्वयन गर्ने/गराउने छ ।

३) संस्थाको हितमा हुने कार्यक्रमहरू सञ्चालन गर्ने छ ।

४) महाधिवेशन वा राष्ट्रिय सम्मेलनप्रति उत्तरदायित्व रहने छ ।

५) संस्थाको उद्देश्य प्राप्तिको लागि उपलब्ध साधन स्रोतको अधिकतम उपभोग र प्रयोग गर्ने छ ।

६) संस्थाको कार्य सम्पादन गर्ने, कार्य योजना बनाउने, स्रोत जुटाउने, कार्यान्वयन, सुपरीक्षण र अनुगमन गर्ने छ ।

७) संस्थाको कोष र सम्पत्ति सुरक्षित तरिकाले राख्न लगाउने र बैंक खाता खोली सञ्चालन गर्ने छ ।

Scanned with CamScanner

८) संघको कर्मचारीहरूको सेवा, शर्त र सुविधा आदि सम्बन्धी कर्मचारी नियमावली बनाउने छ।

९) संस्थाको उद्देश्य परिपूर्तिको लागि आफ्नो कार्य अवधिमा उपयुक्त व्यक्तिहरूको सल्लाहकार समिति, अन्य उपसमिति गठन गर्ने र आवश्यकता अनुरूप कार्यको बाँडफाँड गरि दिने छ।

१०) संस्थाको नेतृत्वदायी भूमिका निर्वाह गर्ने छ।

११) ~~आगामी वर्षको लागि लेखा परीक्षकको नियुक्ति गर्ने छ।~~

## १५. पद त्याग तथा पद पूर्ति

१) अध्यक्षले उपाध्यक्ष मार्फत कार्यकारिणी समितिमा र अन्य पदाधिकारीहरूले अध्यक्ष समक्ष लिखित राजीनामा दिई पद त्याग गर्न सक्नेछ।

२) अध्यक्षको राजीनामामा कार्य समितिले र अन्य पदाधिकारीको राजीनामा अध्यक्षले स्वीकृत गर्न सक्ने छ।

३) ~~निर्वाचन कार्य समितिको बहुमत रहेसम्म रिक्त पदको पूर्ति मनोनयनद्वारा हुन सक्नेछ, तर रिक्त अध्यक्ष पदमा निर्वाचित सदस्यबाट मात्रै पदपूर्ति गर्नु पर्दछ।~~

४) निर्वाचित सदस्यहरू कार्य समितिमा अल्पमतमा रहेको अवस्थामा पुनः राष्ट्रिय महाधिवेशन बोलाई निर्वाचनद्वारा नयाँ केन्द्रीय कार्य समिति गठन गरिने छ।

## १६. अन्य समितिहरू

१) यस विधानको परिधीभित्र रहेर संस्थाको कार्य संचालनको लागि केन्द्रीय कार्य समितिको आवश्यकता अनुसार अन्य समिति वा उप समिति गठन गर्न सक्नेछ।

२) उप समितिहरूको काम, कार्य समितिले तोकिदिए बमोजिम हुनेछ। तर यस्ता समिति वा उपसमितिहरूको गठन महाधिवेशनद्वारा अनुमोदन गराउनुपर्ने छ।

३) जिल्ला कार्य समिति

४) अञ्चल समन्वय समिति

## १७. पदाधिकारीहरूको काम, कर्तव्य र अधिकार :

कार्य समितिका पदाधिकारीहरूको काम कर्तव्य र अधिकार देहाय बमोजिम हुनेछः

१) अध्यक्ष

क) समिति, राष्ट्रिय महाधिवेशन वा विशेष राष्ट्रिय महाधिवेशनको बैठकको अध्यक्षता गर्ने, बैठक सञ्चालन गर्ने।

ख) निर्णायक मत दिने।

ग) संस्थाको तर्फबाट प्रतिनिधित्व गर्ने वा प्रतिनिधि तोक्ने।

घ) संस्थाको नेतृत्व लिने।

ङ) आवश्यकता अनुसार बैठकहरू बोलाउन महासचिव एवम् सचिवलाई निर्देशन दिने।

च) अन्य पदाधिकारी एवं सदस्यहरूलाई कामको बाँडफाँड गर्ने।

छ) अभिलेख प्रमाणित गर्ने।



Scanned with CamScanner

२) उपाध्यक्ष

क) अध्यक्षलाई सहयोग गर्ने ।

ख) कार्य समितिले दिएको जिम्मेवारी पूरा गर्ने ।

ग) अध्यक्षको अनुपस्थितिमा निजको कार्य गर्ने ।

३) महासचिव

क) सचिवालयको प्रमुखको रूपमा काम गर्ने ।

ख) अध्यक्षको आदेश अनुरूप कार्यकारिणीको वैठक तथा साधारण सभाको वैठक बोलाउने ।

ग) हरेक बैठकको निर्णय लेख्ने तथा निर्णय पुस्तिका दुरुस्त राख्ने ।

घ) संस्थाको तर्फबाट लेखापढी गर्ने ।

ङ) संस्थाको दैनिक प्रशासन चलाउने ।

च) राष्ट्रिय महाधिवेशन वा विशेष राष्ट्रिय महाधिवेशनको बैठकमा वार्षिक प्रतिवेदन तथा आगामी वर्षको कार्यक्रम प्रस्तुत गर्ने ।

छ) राष्ट्रिय महाधिवेशन वा विशेष राष्ट्रिय महाधिवेशनको निर्णय कार्यान्वयन गर्ने ।

ज) अध्यक्षको निर्देशनमा रही काम गर्ने ।

झ) विधानको अधिनमा रही संघको उद्देश्य प्राप्तिका लागि आवश्यक काम गर्ने ।

ण) जिल्ला कार्य समितिको हकमा यो कार्य सचिवले गर्ने छ ।

४) सचिव

क) महासचिवको अनुपस्थितिमा महासचिवको काम गर्ने एवम् सहयोग गर्ने ।

ख) विधानको अधिनमा रही संघको उद्देश्य प्राप्तिका लागि आवश्यक काम गर्ने ।

ग) जिल्ला कार्य समितिको हकमा यो कार्य सह-सचिवले गर्ने छ ।

५) कोषाध्यक्ष

क) संस्थाको हिसाव किताव अद्यावधिक राख्ने

ख) आर्थिक प्रशासन सम्वन्धी विषयहरूको जिम्मा लिने ।

ग) आर्थिक प्रतिवेदन तथा आगामी वार्षिक अनुमानित आय-व्यय विवरण राष्ट्रिय अधिवेशन, महाधिवेशन वा विशेष राष्ट्रिय महाधिवेशनको बैठकमा पेश गर्ने ।

घ) संस्थाको आय-व्ययको हिसाब लेखा परीक्षकबाट गराउने ।

ङ) आर्थिक स्रोतको संरक्षण र प्रवर्द्धन सम्वन्धी काम गर्ने ।

च) वैंक सम्वन्धी कार्यको जिम्मा लिने ।

छ) विधानको अधिनमा रही संघको उद्देश्य प्राप्तिका लागि आवश्यक काम गर्ने ।

(६) सदस्यहरू

क) कार्यकारी समितिको बैठकहरूमा नियमित तथा सक्रिय सहभागिता भई सरसल्लाह, सहयोग तथा विषय सुचीमा छलफल गर्ने सदस्यहरूको प्रमुख कर्तव्य हुनेछ ।



Scanned with CamScanner

ख) निर्देशन अनुसार अन्य जिम्मेवारी लिने तथा कार्यहरू गर्ने ।

ग) विधानको अधिनमा रही संघको उद्देश्य प्राप्तिको लागि आवश्यक काम गर्ने ।

७) सल्लाहकार सदस्यहरू

क) कार्यकारी समितिलाई संघको हितको लागि आवश्यक सहयोग र सुझाव दिने ।

१८. **गणपूरक संख्या**

क) संस्थाको केन्द्रीय, जिल्ला वा अञ्चल समन्वय समितिले तोकेको प्रतिनिधिहरूको ६० प्रतिशत प्रतिनिधिहरूको उपस्थित नभै प्रथम पटक केन्द्रीय महाधिवेशन वा विशेष महाधिवेशनको काम कारवाही हुनेछैन । जिल्ला वा अञ्चलको हकमा पनि यही अनुरूप हुने छ ।

ख) तर विधानको दफा ११ (५) मा उल्लेख भए बमोजिम पुनः बोलाइएको महाधिवेशन वा विशेष महाधिवेशनमा कूल प्रतिनिधिहरू संख्याको ५१ प्रतिशत उपस्थित भएमा सभा गर्न बाधा पर्ने छैन । जिल्ला र अञ्चलको हकमा पनि यही अनुरूप काम कारवाही हुनेछ ।

## जिल्ला कार्य समिति/अञ्चल समन्वय समितिको गठन काम, कर्तव्य र अधिकार

१९. **जिल्ला/अञ्चल समन्वय समितिको गठन :**

१) जिल्ला र अञ्चल समन्वय समितिले वितरण गरेको सन्बन्धीत जिल्ला वा अञ्चलका साधारण सदस्यहरू, सल्लाहकारहरू जिल्ला अधिवेशन प्रतिनिधि रहने छन् ।

२) यस संस्थाको जिल्ला अधिवेशन देहाय बमोजिम हुने छ–

क) जिल्ला अधिवेशन : जिल्ला कार्य समिति र अञ्चल समन्वय समितिको आयोजनामा जिल्ला र अञ्चल समन्वय समितिको अधिवेशन २ वर्षमा १ पटक बस्ने छ ।

ख) विशेष अधिवेशन : जिल्ला वा अञ्चल समन्वय समितिको कुल सदस्य संख्याको एक चौथाई सदस्य वा गठित साधारण सदस्यको ५१ प्रतिशतले कारण जनाई विशेष जिल्ला वा अञ्चल अधिवेशन माग गरेमा विशेष अधिवेशन कम्तीमा १५ दिनभित्र अनिवार्य रूपमा बोलाउनु पर्ने छ । तर अधिवेशन वा विशेष अधिवेशन बसेको ३ महिनाभित्र पुनः विशेष अधिवेशन बस्न सक्ने छैन ।

३) यस संस्थाको जिल्ला अधिवेशन गर्नको लागि कम्तिमा १५ दिन अगावै र विशेष अधिवेशन गर्नको लागि कम्तिमा १२ दिन अगावै अधिवेशन हुने स्थान, मिति, समय र छलफल गर्ने विषय खोली सबै जिल्ला वा अञ्चल समन्वय समिति प्रतिनिधिहरूलाई अनिवार्य रूपले सूचना दिइने छ ।

४) उप-दफा (४) बमोजिम बोलाइएको अधिवेशन, साधारण सभा वा विशेष अधिवेशनमा विधानको दफा १८ बमोजिमको गणपूरक संख्या नपुगी सभा हुन नसकेमा कम्तिमा ७ दिनको म्याद दिई पुनः अधिवेशन, साधारण सभा वा बिशेष अधिवेशन बोलाइने छ ।

५) जिल्ला वा अञ्चल समन्वय समितिको अधिवेशन, साधारण सभा र विशेष अधिवेशनको छुट्टाछुट्टै निर्णय पुस्तिका राखिने छ ।

६) संस्थाको जिल्ला वा अञ्चल समन्वय समितिको अधिवेशन हुने वर्ष संघको जिल्ला साधारण सभा बोलाउने छैन । साधारण सभाले गर्ने काम उक्त अधिवेशनले गर्ने छ ।

Scanned with CamScanner

२०. जिल्ला कार्य समिति

क) केन्द्रीय समितिको मातहतमा रहने गरि सम्भव भएसम्म प्रत्येक जिल्लामा जिल्ला कार्य समिति गठन गरिने छ । जसमा

| | |
|---|---|
| अध्यक्ष | १ |
| उपाध्यक्ष | १ |
| सचिव | १ |
| सह-सचिव | १ |
| कोषाध्यक्ष | १ |
| सदस्यहरू | ४ |

ख) ९ जनाको जिल्ला कार्यसमिति हुनेछ ।

ग) जिल्ला कार्यसमितिको कार्यकाल २ वर्षको हुनेछ । सम्बन्धित जिल्लामा संस्थाका साधारण सदस्यहरू सबै जिल्ला अधिवेशनका प्रतिनिधि हुनेछन् । जसले जिल्ला समितिको निर्वाचनमा मतदान गर्न र उम्मेदवार हुने अधिकार रहने छ । जिल्ला कार्य समिति गठन गर्नको लागि केन्द्रीय समिति सदस्यको उपस्थितिमा जिल्ला समितिद्वारा छनोट गरिएका निर्वाचन मण्डलले गठन गर्ने छ ।

घ) जिल्ला अधिवेशन हुनुभन्दा अगावै कार्य समितिमा रहेको कुनै सदस्यको पद रिक्त हुन आएमा बाँकी अवधिका लागि कार्य समितिको सदस्यको मनोनयन गर्ने वा नगर्ने भन्ने निर्णय जिल्ला कार्य समितिमा रहने छ । यसरी सो पदमा मनोनयन भएमा त्यो सदस्यको कार्यकाल बाँकी रहेको कार्यकालसम्मको लागि मात्र हुने छ ।

ङ) जिल्ला कार्य समितिको बैठक आवश्यकता अनुसार अध्यक्षले बोलाउने छ । तर जिल्ला कार्य समितिको पदाधिकारीहरूको जम्मा संख्याको ५१ प्रतिशतले बैठक बोलाउन माग गरेमा अध्यक्षले कार्यसमितिको बैठक तुरुन्त बोलाउनु पर्नेछ ।

च) कार्य समितिको बैठकमा सदस्य स्वयम् उपस्थित हुनुपर्ने छ ।

छ) सदस्यहरूको कूल संख्याको ५१ प्रतिशत सदस्यहरू उपस्थित नभै जिल्ला कार्य समितिको बैठक बस्ने छैन ।

ज) जिल्ला कार्य समितिको बैठकमा अध्यक्षले अध्यक्षता गर्ने छ र निजको अनुपस्थितिमा उपाध्यक्षले र उपाध्यक्षको पनि अनुपस्थिति रहेमा बैठकमा उपस्थित भएका सदस्यहरूले छानेको वा जेष्ठ सदस्यले अध्यक्षता गर्ने छ ।

झ) जिल्ला कार्य समितिको बैठकमा बहुमतको निर्णय मान्य हुनेछ । तर मत बराबर भएमा अध्यक्षले निर्णायक मत दिन सक्नेछ । जिल्ला कार्य समितिको एक वर्षमा अधिवेशन र अर्को वर्ष साधारण सभा हुनेछ । जिल्ला अधिवेशन हुने वर्ष अधिवेशनले वार्षिक साधारण सभाको कार्य गर्ने छ । वार्षिक अधिवेशन र साधारण सभाले प्रगति विवरण एवम् आय व्यय माथि छलफल गरि पारित गर्ने छ ।

ण) कार्य समितिको बैठकमा छलफल भएको विषयहरूको छुट्टै निर्णय किताबमा लेखी राखिनेछ र सो निर्णय विवरणमा बैठकमा उपस्थित सम्पूर्ण सदस्यहरूले सही गर्नु पर्ने छ । तर निर्णयमा असहमति जनाउनेहरूले कैफियत खोली सही गर्नु पर्ने छ ।

त) माथिका दफाहरूमा जुनसुकै कुरा लेखिएको भएतापनि जिल्ला कार्य समितिले गर्न पाउने कुनै



Scanned with CamScanner

कार्यको सम्बन्धमा कार्य समितिको सबै पदाधिकारीहरू लिखित रूपमा सहमत भएमा त्यस्तो सहमतिलाई निर्णय पुस्तिकामा संलग्न गरी त्यस्तो काम बैठक बिना पनि गर्न सकिनेछ। उपरोक्त बमोजिमको सहमतिलाई कार्य समितिको बैठकको निर्णय सरह मानिनेछ।

## अञ्चल समन्वय समिति काम र कर्तव्य

२१. **अञ्चल समन्वय समिति**

क) केन्द्रीय समितिको मातहतमा रहने गरि जिल्लामा चलचित्रकर्मी कम रहेको खण्डमा अञ्चल भरिका चलचित्रकर्मीहरूलाई समेटेर अञ्चल समन्वय समिति गठन गरिने छ। जसमा

| | |
|---|---|
| अध्यक्ष | १ |
| उपाध्यक्ष | १ |
| सचिव | १ |
| सह-सचिव | १ |
| कोषाध्यक्ष | १ |
| सदस्यहरू | ४ |

ख) ९ जनाको अञ्चल समन्वय समिति हुनेछ।

ग) अञ्चल समन्वय समितिको कार्यकाल २ वर्षको हुनेछ। सम्बन्धित अञ्चलमा संस्थाका साधारण सदस्यहरू सबै अञ्चल समन्वय समितिका अधिवेशन प्रतिनिधि हुनेछन्। जसल अञ्चल समन्वय समितिको निर्वाचनमा मतदान गर्न र उम्मेदवार हुने अधिकार रहने छ। अञ्चल समन्वय समिति गठन गर्नको लागि केन्द्रीय समिति सदस्यको उपस्थितिमा अञ्चल समन्वय समितिद्वारा छनोट गरिएका निर्वाचन मण्डलले गठन गर्ने छ।

घ) अञ्चल समन्वय समिति अधिवेशन हुनुभन्दा अगावै कार्य समितिमा रहेको कुनै सदस्यको पद रिक्त हुन आएमा बाँकी अवधिका लागि कार्य समितिको सदस्यको मनोनयन गर्ने वा नगर्ने भन्ने निर्णय अञ्चल समन्वय समितिमा रहने छ। यसरी सो पदमा मनोनयन भएमा त्यो सदस्यको कार्यकाल बाँकी रहेको कार्यकालसम्मको लागि मात्र हुने छ।

ङ) अञ्चल समन्वय समितिको बैठक आवश्यकता अनुसार अध्यक्षले बोलाउने छ। तर अञ्चल समन्वय समितिको पदाधिकारीहरूको जम्मा संख्याको ५१ प्रतिशतले बैठक बोलाउन माग गरेमा अध्यक्षले कार्यसमितिको बैठक तुरुन्त बोलाउनु पर्नेछ।

च) कार्य समितिको बैठकमा सदस्य स्वयम् उपस्थित हुनुपर्ने छ।

छ) सदस्यहरूको कूल संख्याको ५१ प्रतिशत सदस्यहरू उपस्थित नभै अञ्चल समन्वय समितिको बैठक बस्ने छैन।

ज) अञ्चल समन्वय समितिको बैठकमा अध्यक्षले अध्यक्षता गर्ने छ र निजको अनुपस्थितिमा उपाध्यक्षले र उपाध्यक्षको पनि अनुपस्थिति रहेमा बैठकमा उपस्थित भएका सदस्यहरूले छानेको वा जेष्ठ सदस्यले अध्यक्षता गर्ने छ।

झ) अञ्चल समन्वय समितिको बैठकमा वहुमतको निर्णय मान्य हुनेछ। तर मत बराबर भएमा अध्यक्षले निर्णायक मत दिन सक्नेछ। अञ्चल समन्वय समितिको एक वर्षमा अधिवेशन र अर्को वर्ष साधारण सभा हुनेछ। अञ्चल समन्वय समितिको अधिवेशन हुने वर्ष अधिवेशनले वार्षिक साधारण सभाको कार्य गर्ने छ। वार्षिक अधिवेशन र साधारण सभाले प्रगति विवरण एवम् आय व्यय माथि छलफल गरि पारित गर्ने छ।

Scanned with CamScanner

ण) कार्य समितिको बैठकमा छलफल भएको विषयहरूको छुट्टै निर्णय किताबमा लेखी राखिनेछ र सो निर्णय विवरणमा बैठकमा उपस्थित सम्पूर्ण सदस्यहरूले सही गर्नु पर्ने छ। तर निर्णयमा असहमति जनाउनेहरूले कैफियत खोली सही गर्नु पर्ने छ।

त) माथिका दफाहरूमा जुनसुकै कुरा लेखिएको भएतापनि अञ्चल समन्वय समितिले गर्न पाउने कुनै कार्यको सम्बन्धमा कार्य समितिको सबै पदाधिकारीहरू लिखित रूपमा सहमत भएमा त्यस्तो सहमतिलाई निर्णय पुस्तिकामा संलग्न गरी त्यस्तो काम बैठक बिना पनि गर्न सकिनेछ। उपरोक्त बमोजिमको सहमतिलाई कार्य समितिको बैठकको निर्णय सरह मानिनेछ।

## परिच्छेद- ६
## आर्थिक व्यवस्था

### २१. संस्थाको कोष

१) संस्थाको आफ्नो एउटा छुट्टै कोष हुनेछ र सो कोषमा देहाय बमोजिमको प्राप्त रकमहरू जम्मा हुनेछन् :

क) सदस्यता बापत प्राप्त प्रवेश शुल्क र सदस्यता नविकरण शुल्कको रकम।

ख) कसैले स्वेच्छाले दिएको अनुदान, सहायता बापत प्राप्त रकम।

ग) संस्थाको चल अचल सम्पत्तिबाट हुने आम्दानी।

घ) विदेशी संस्था, व्यक्ति वा अन्तर्राष्ट्रिय संघ-संस्थाबाट सहयोग बापत प्राप्त रकम।

ङ) स्थानीय निकायबाट प्राप्त अनुदान वा सहयोग बापत प्राप्त रकम।

च) नेपाल सरकारबाट प्राप्त अनुदान।

छ) चलचित्रको विशेष प्रदर्शनी र चलचित्र महोत्सवबाट हुने आम्दानी।

२) विदेशी संघ-संस्था वा व्यक्तिबाट आर्थिक सहयोग तथा अनुदान लिने भए संस्थाले नेपाल सरकार अर्थ मन्त्रालयबाट स्वीकृत लिनुपर्नेछ।

३) संस्थामा प्राप्त रकम स्थानीय बैंकमा जम्मा गरी बैंक खाता सञ्चालन गरिने छ।

### २२. खाता सञ्चालन

संस्थाको बैंक खाता केन्द्रीय समितिको हकमा अध्यक्ष, महासचिव र कोषाध्यक्ष मध्ये कोषाध्यक्षको अनिवार्य हस्ताक्षर रहने गरि संयुक्त दस्तखतबाट खाता सञ्चालन हुनेछ भने जिल्ला र अञ्चल समन्वय समितिको हकमा अध्यक्ष, सचिव र कोषाध्यक्ष मध्ये कोषाध्यक्षको अनिवार्य हस्ताक्षर रहने गरि खाता सञ्चालन हुने छ। प्रचलित ऐन नियम अनुसार खर्च गर्ने तथा खर्चको श्रेस्ता राख्ने व्यवस्था गरिनेछ।

### २३. कोषको रकम खर्च गर्ने तरिका

संस्थाको कोषमा जम्मा भएको रकम खर्च गर्दा देहाय बमोजिम तरिका अपनाई खर्च गरिनेछ।

१) संस्थाको बार्षिक बजेट योजना र कार्यक्रम स्वीकृत नगरी कोषबाट खर्च गर्न सकिने छैन।



Scanned with CamScanner

२) राष्ट्रिय महाधिवेशन, अधिवेशनबाट पारित बजेट र कार्यक्रमको अधिनमा रही कोषबाट रकम खर्च गर्न सकिने छ । जिल्ला र अञ्चल समन्वय समितिको हकमा अधिवेशन र साधारण सभाबाट पारित बजेट र कार्यक्रमको अधिनमा रही कोषबाट रकम खर्च गर्न सकिने छ ।

३) कोषबाट खर्च भएको रकमको आर्थिक प्रतिवेदन केन्द्रीय महाधिवेशन, अधिवेशन र जिल्ला वा अञ्चलको हकमा जिल्ला/अञ्चल अधिवेशन वा साधारण सभामा अनिवार्य रूपले पेश गर्नु पर्ने छ ।

४) कोषको रकम खर्च गर्दा तोकिए बमोजिम खर्च गर्नुपर्ने छ ।

२४. **संस्थाको लेखा र लेखा परिक्षण**

१) संस्थाको आय/व्ययको लेखा प्रचलित कानून बमोजिम स्पष्ट तवरले राखिनेछ ।

२) संस्थाको लेखा परीक्षण प्रचलित कानून बमोजिम रजिष्टर्ड लेखा परिक्षकबाट हुनेछ ।

३) नेपाल सरकार वा स्थानीय अधिकारीले चाहेमा जुनसुकै बखतमा आफै वा मातहतका कर्मचारीहरू खटाई संस्थाको हिसावकिताव जाँच गर्न गराउन सक्ने छ ।

४) लेखा परिक्षणको नियुक्ति सम्बन्धित कार्य समितिबाट हुनेछ ।

## परिच्छेद- ७
## निर्वाचन, अविश्वासको प्रस्ताव र विधान संशोधन सम्बन्धी व्यवस्था

२५. **निर्वाचन सम्बन्धी व्यवस्था**

क) केन्द्रीय कार्य समिति, जिल्ला एवम् अञ्चल समन्वय समितिको निर्वाचन प्रयोजनको लागि बढीमा ३ जनाको एक निर्वाचन समिति सम्बन्धित कार्य समितिको सहमतिमा गठन गरिनेछ । निर्वाचन सकिएपछि निर्वाचन समिति स्वत: विघटन हुनेछ । र, निर्वाचन समितिका सदस्यले निर्वाचनमा मतदान गर्न र उम्मेदवार बन्न पाउने छैन । निर्वाचन गोप्य मतदान वा सर्वसम्मतिबाट हुनेछ ।

ख) निर्वाचन समितिले प्रचलित कानूनको परिधिभित्र रहेर निर्वाचन सम्बन्धी नियम, आवश्यक सूचना प्रकाशित (कार्यविधि) तथा निर्वाचन सम्पन्न गराउने पुरा अधिकार निर्वाचन समितिमा रहने छ ।

ग) निर्वाचन सम्बन्धी विवाद उत्पन्न भएमा विवादको टुङ्गो निर्वाचन समितिले गरेको निर्णय नै अन्तिम हुनेछ ।

घ) संस्था दर्ता भएको ६ महिना भित्र पहिलो पटक र त्यसपछि प्रत्येक ~~३~~ २ वर्षमा महाधिवेशन गरि निर्वाचन गरिनेछ ।

२६. **उम्मेदवार हुने योग्यता**

कार्य समितिको उम्मेदवार हुन देहाय बमोजिमको योग्यता पुगेको हुनु पर्ने छ–

१) संस्थाको सदस्यता प्राप्त गरेका सदस्यहरू हुनुपर्ने छ ।

२) सदस्यताको नविकरण गराएको सदस्य हुनुपर्ने छ ।

३) केन्द्रको हकमा जिल्ला वा अञ्चलको प्रतिनिधि हुने पर्ने छ ।

४) केन्द्रीय समितिको अध्यक्ष, उपाध्यक्ष, महासचिव, सचिव र कोषाध्यक्ष हुनको लागि केन्द्रीय समितिमा कम्तिमा १ कार्यकाल काम गरेको हुने पर्ने छ । यसै गरि जिल्ला समिति र अञ्चल

Scanned with CamScanner

समन्वय समितिको हकमा चाहिँ अध्यक्ष पदमा मात्र (प्रथम पटक बाहेक) १ कार्यकाल समितिमा रहेर कार्य गरेको हुनु पर्ने छ।

२७. अविश्वासको प्रस्ताव

१) प्रस्तुति प्रक्रिया :

क) अविश्वासको प्रस्ताव लिखित रूपमा कुन पदाधिकारीको विरुद्धमा गरिएको हो स्पष्ट खुलाई कार्य समितिमा दर्ता गर्नु पर्नेछ।

ख) शिष्ट शब्दको प्रयोग गरी लेखिएको हुन पर्नेछ।

ग) प्रस्तावको विषय स्पष्ट र व्यवहारिक हुन पर्नेछ।

घ) महाधिवेशन, अधिवेशन सदस्यहरू मध्येबाट कम्तीमा १/४ (एक चौथाई) सदस्यहरूको प्रष्ट नाम, थर, सदस्यता नम्बर र ठेगाना सहित खुलाई सही भएको हुनु पर्छ।

२) उप-दफा १ बमोजिम कार्य समितिमा दर्ता भएको अविश्वासको प्रस्तावको स्पष्ट विषय खुलाई राष्ट्रिय महाधिवेशन, सम्मेलन वा विशेष महाधिवेशन बस्ने स्थान, मिति, समय समेत तोकी संघको सम्पूर्ण सदस्यहरूलाई विधानको दफा ११ बमोजिम राष्ट्रिय महाधिवेशन वा विशेष महाधिवेशन बस्ने सूचना दिइनेछ। जिल्ला समिति र अञ्चल समन्वय समितिको हकमा अधिवेशन वा साधारण सभा बस्ने स्थान, मिति, समय समेत तोकी संघको सम्पूर्ण सदस्यहरूलाई विधानको दफा १९ बमोजिम अधिवेशन, विशेष अधिवेशन वा साधारण सभा वस्ने सूचना दिइनेछ।

३) अविश्वासको प्रस्ताव माथि छलफलको प्रक्रिया

क) महाधिवेशन, सम्मेलनमा अध्यक्षता गर्ने व्यक्तिले महाधिवेशन, सम्मेलनमा दफा २७ (१) बमोजिमको प्रस्ताव पेश गर्न अनुमति दिने छ र प्रस्ताव पेश गर्ने सदस्यहरू मध्ये १ जनाले अविश्वासको प्रस्ताव ल्याउनुपर्ने कारण सहितको आफ्नो अभिमत सभा समक्ष प्रस्तुत गर्नेछ।

ख) उप-दफा ३ (क) बमोजिम अविश्वासको प्रस्ताव पक्षका सदस्यले आफ्नो अभिमत प्रस्तुत गरेपछि सो प्रस्ताव उपर मत प्रकट गर्न चाहने बढीमा अन्य तीन जना सदस्यहरूलाई अध्यक्षले अभिमत प्रकट गर्न अनुमति दिनेछ।

ग) उप-दफा १ बमोजिम अविश्वासको प्रस्ताव जुन पदाधिकारीहरू विरुद्ध प्रस्तुत गरिएको हो, अध्यक्षता गर्ने व्यक्तिले ती पदाधिकारीहरूलाई आफ्नो सफाइ पेश गर्ने मौकाको लागि आफ्नो भनाइहरू राख्न अनुमति दिइनेछ।

घ) अध्यक्षको विरुद्धमा पेश गरिएको अविश्वासको प्रस्ताव माथि छलफल हुँदा बैठकको सभापतित्व उपाध्यक्षले वा निजको अनुपस्थितिमा वैठकले तोकेको सदस्यताबाट हुनेछ।

४) अविश्वासको प्रस्ताव माथि निर्णय

क) अविश्वासको प्रस्ताव उपर आफ्नो भनाइ प्रस्तुत गर्ने क्रम समाप्त भए पछि अध्यक्षता गर्ने व्यक्तिले सो अविश्वासको प्रस्तावको बहुमत पक्षमा वा विपक्षमा छ भन्ने निर्णयको लागि देहाय बमोजिमको कुनै एक तरिका अपनाई अविश्वासको प्रस्ताव निर्णयको घोषणा गर्नेछ।

अ) अविश्वासको प्रस्तावको पक्षमा मत प्रकट गर्ने एक समूहमा र विपक्षमा मत प्रकट गर्ने अर्को समूहमा छुट्याएर वा

आ) सभाका सदस्यहरूलाई अविश्वासको प्रस्तावको पक्ष र विपक्षमा गोप्य मतदान गराएर ।

ख) सभाको कुल सदस्य संख्याको २/३ (दुई तिहाई) बहुमतले अविश्वासको प्रस्ताव पारित हुनेछ । त्यस्तो प्रस्ताव पारित भएमा प्रस्तावित पक्षका व्यक्तिहरू पद मुक्त हुनेछन् ।

ग) निर्वाचित भएको ६ महिना नपुगी वा प्रस्ताव विफल भएको ६ महिना नपुगी त्यस्तो व्यक्ति उपर पुनः अविश्वासको प्रस्ताव ल्याउन पाइने छैन ।

२८. विधान संशोधन

कुल सदस्य संख्याको २/३ (दुई तिहाई) राष्ट्रिय महाधिवेशन सदस्यहरूले अनुमोदन गरेपश्चात मात्र संघको कुनै दफा संशोधन वा खारेजको लागि स्थानीय अधिकारी समक्ष सिफारिस गरी पठाउनु पर्नेछ । स्थानीय अधिकारीबाट स्वीकृत भएपश्चात मात्र संघको कुनै दफा संशोधन वा खारेज भएको मानिने छ ।

## परिच्छेद - ८
## विविध

२९. सदस्यताको आचरण

क) संस्थाको हित विपरित कुनै पनि काम गर्न/गराउनु हुँदैन ।

ख) संस्थाको संरक्षण, सम्वर्द्धन, सुदृढीकरण, प्रचार-प्रसारको लागि सधैं प्रयत्नशील एवं चिन्तनशील रहनु पर्नेछ ।

ग) संस्थाको काम, कारवाही र संघको हितको लागि स्वच्छ र रचनात्मक आलोचना गर्न बन्देज लगाइने छैन ।

घ) संस्थाको राष्ट्रिय महाधिवेशन, अधिवेशन अथवा कार्यकारिणी समितिले पारित गरेको निर्णयहरू पालना गर्नुपर्दछ ।

ङ) जातीय सांगठनिक सेवालाई दलगत राजनैतिकबाट मुक्त राखी सदैव तटस्थ र स्वच्छता कायम गर्नुपर्दछ ।

च) कार्य समितिका पदाधिकारी, महाधिवेशन वा अधिवेशनका सदस्यहरूले बैठक वा सभामा असभ्य र अश्लिल शब्दको प्रयोग गर्न पाइने छैन ।

छ) संस्थाको गोप्यता भङ्ग गर्नु हुँदैन ।

ज) संस्थालाई वुझाउनु पर्ने कुनै पनि रकम समयमा बुझाउनु पर्दछ । संगठन भित्र भ्रष्टाचार, घुसखोरी र संस्थाको आर्थिक स्रोत (रकम) हिनामिना गर्नु हुँदैन ।

३०. नियम बनाउन सक्ने

१) संस्थाले आफ्नो कार्यसम्पादन गर्ने सन्दर्भमा आवश्यक नियम बनाउन सक्ने छ र सो नियम केन्द्रीय समितिबाट पारित गराई लागु हुनेछ । र, स्थानीय अधिकारीलाई सोको जानकारी दिनु पर्नेछ ।

२) यो विधान र विधान अन्तर्गत बनेको नियमको अधिनमा रही संघको कार्य सञ्चालन र उद्देश्य कार्यान्वयनका लागि कार्यसमितिले कर्मचारी व्यवस्था र आर्थिक प्रशासन सम्बन्धी विनियम वनाई लागु गर्न सक्नेछ । त्यस्ता विनियमहरू राष्ट्रिय महाधिवेशनबाट अनुमोदन गराउनु पर्नेछ ।

३१. **कर्मचारीको व्यवस्था**

१) संस्थाको दैनिक कार्य सञ्चालन र योजना तथा कार्यक्रम सञ्चालनको लागि कर्मचारी दरबन्दी सिर्जना, पारिश्रमिक, भत्ता तथा अन्य सुविधा र कर्मचारीको सेवा शर्तहरू अपनाउनु पर्ने कार्यविधि तोकिए बमोजिम हुनेछ ।

२) संस्थाले विदेशी सहयोग प्राप्त गरी संघको कार्य सञ्चालन गर्न विदेशी सल्लाकार वा स्वयम् सेवक राख्ने अवस्था भएमा निजले काम गर्ने अवधि, पुऱ्याउने सेवा, कामको औचित्य, सुविधा र तिनको योग्यता समेतको विवरण जिल्ला प्रशासन कार्यालय, जिल्ला विकास समिति र समाज कल्याण परिषद्मा समेत जानकारी गराइनेछ ।

३२. **संस्थाको खारेजी**

१) राष्ट्रिय महाधिवेशनले आवश्यक देखेमा विशेष प्रस्ताव पारित गरी संस्था खारेजी गर्न सक्नेछ ।

२) उपदफा १ बमोजिम संघको खारेजीको प्रस्ताव पारित गर्दा राष्ट्रिय महाधिवेशनले खारेजीको लागि एक वा एकभन्दा बढी लिक्विडेटरहरू र संघको हरहिसाव गर्नको लागि एक वा एकभन्दा बढी लेखा परिक्षकहरू नियुक्त गर्न सक्नेछन् ।

३) उप-दफा २ बमोजिम नियुक्त लिक्विडेटर र लेखा परीक्षकहरूको पारिश्रमिक राष्ट्रिय महाधिवेशनले तोकिदिए बमोजिम हुनेछ ।

४) यसरी कारणवंस संघ विघटन भई खारेज भएमा संघको दायित्व फरफारक गरी बाँकी रहने सम्पूर्ण जायजेथा नेपाल सरकारको हुनेछ ।

३३. **बर बुझारथ**

पुरानो कार्यकारिणी सदस्यहरूले आफ्नो जिम्मामा रहेको नगदी तथा जिन्सी नयाँ कार्यकारिणी समितिलाई ~~३२~~ २१ दिनभित्र हस्तान्तरण गर्नु पर्नेछ ।

३४. **व्याख्या**

यो विधान र विधान अन्तर्गत बनेको नियम विनियमको व्याख्या गर्ने अधिकार कार्य समितिलाई हुनेछ ।

३५. **ऐन अनुसार हुने**

यस विधानमा उल्लेख नभएका कुराहरू कानून बमोजिम हुनेछ र ऐन, नियम र प्रचलित कानूनसँग बाझिन गएमा बाझिएको हदसम्म स्वतः निस्क्रिय हुनेछन् ।

३६. **निर्देशनको पालना**

नेपाल सरकार वा स्थानीय अधिकारीले समय-समयमा दिएको निर्देशनको पालना गर्नु संस्थाको कर्तव्य हुनेछ ।

३७. **तदर्थ समिति**

१. यो संस्था स्थापना गरि दर्ता गराउनुको लागि गठित समितिले ६ महिना भित्र साधारण सभा बोलाई विधान अनुसारको निर्वाचन समितिको गठन गरि नयाँ कार्यसमितिको निर्वाचन गराउने छ र सो को जानकारी स्थानीय अधिकारीलाई दिइने छ ।

२. प्रथम पटक निर्वाचन सम्पन्न नभएसम्मको अवस्थामा कार्य समितिले गरेका काम कारवाहीहरु यसै विधान सरह भएको मानिने छ ।



Scanned with CamScanner

३८ हामी ११ जनाका निम्न संस्थापकहरु यस विधान बमोजिम कार्य गर्न मञ्जुर भई निम्न साक्षीको रोहबरमा विधानमा सही छाप गर्दछौं ।

१. नाम थर : युवराज गास्की
ठेगाना पातेचोक देउराली
जिल्ला स्याङ्जा
नगरपालिका ........................ हाल: सामाखुसी-, काठमाडौं
गा.वि.स वडा नं ६
ब्लक नं............

२. नाम थर महेन्द्र मगर हाल: चावहिल, काठमाडौं
ठेगाना बेलटार
जिल्ला उदयपुर
नगरपालिका ........................
गा.वि.स वडा नं. बेलटार - 2
ब्लक नं............

३. नाम थर मेक बहादुर पुन हाल: कोटेश्वर, काठमाडौं
ठेगाना............
जिल्ला रुपन्देही
नगरपालिका बुटवल
गा.वि.स वडा नं. १०
ब्लक नं............

४. नाम थर प्रतिमाया पुन हाल: सामाखुसी, काठमाडौं
ठेगाना लुम्बिनी
जिल्ला रुपन्देही
नगरपालिका तिलोत्तमा
गा.वि.स वडा नं. ८
ब्लक नं. ८/८

५. नाम थर अनिसरा थापा मगर
ठेगाना ब्या.०.पा. गोल्मी
जिल्ला तनहुँ
नगरपालिका ........................ हाल: नयाँबजार, काठमाडौं
गा.वि.स वडा नं. 6
ब्लक नं............

६. नाम थर ओंग बहादुर घलेमगर
ठेगाना कोशी
जिल्ला धनकुटा
नगरपालिका धनकौलेजितपुर
गा.वि.स वडा नं. ८ हाल: गोंगबु, काठमाडौं
ब्लक नं............

१. नाम थर विष्णु कुवापोकी
ठेगाना रुम्जाटार
जिल्ला स्याङ्जा
नगरपालिका ........................
गा.वि.स वडा नं. १५
ब्लक नं............

२. नाम थर रत्नगिरि राना मगर
ठेगाना तोली
जिल्ला दैलेख
नगरपालिका ........................
गा.वि.स वडा नं. तोली - 6
ब्लक नं............

३. नाम थर उदय पुन
ठेगाना............
जिल्ला रुपन्देही
नगरपालिका बुटवल
गा.वि.स वडा नं. १०
ब्लक नं............

४. नाम थर शान्ति पुन
ठेगाना लुम्बिनी
जिल्ला रुपन्देही
नगरपालिका तिलोत्तमा
गा.वि.स वडा नं. ८
ब्लक नं. ८/८

५. नाम थर श्रीमाया आले मगर
ठेगाना मध्यपाल पारखा चोक
जिल्ला नवलपुर
नगरपालिका ........................
गा.वि.स वडा नं. ८
ब्लक नं............

६. नाम थर दिलु शाही
ठेगाना कोशी
जिल्ला धनकुटा
नगरपालिका धनकौलेजितपुर
गा.वि.स वडा नं. ८
ब्लक नं............



अनुसूची १
यस संस्थाको छाप निम्न बमोजिम हुने छ ।




मगर महिलाहरूले लगाउने पटुकाको रंग हरियो, पहेंलो र निलो रंग - आदिवासी जनजातीहरूको चिन्ह ब्वाँसमित्र चलचित्रको रिल्माथि तल र बीचमा अंग्रेजीमा M लेखिएको अक्षर रहनेछ । र देउमा अंग्रेजीमा Magar Film Maker's' Association ~~रहनेछ~~ लेखिएको हुनेछ ।

अनुसूची २
यस शपथ निम्न बमोजिम हुने छ ।

म............................................................................निर्वाचन समिति, उपस्थित प्रतिनिधि र पर्यवेक्षकहरूलाई साक्षी राखी शपथ लिन्छु कि मगर चलचित्रकर्मी संघको .................................. पदमा निर्विरोध/निर्वाचित भएकोले विधानमा तोकिएको कार्य मेरो तन, मन, वचन, कर्म र विवेकले जानेबुझेसम्म इमान, धर्म तथा परम कर्तब्य सम्झी मगर चलचित्रकर्मी संघ र मगर चलचित्रकर्मीहरू प्रति वफादार रही मगर चलचित्रकर्मी संघको विधान २०६६ को अधिनमा रही आफ्नो काम, कर्तब्यको पालना गर्नेछु ।

सपथ लिने व्यक्तिको हस्ताक्षर :.....................................

सदस्य सदस्य सदस्य सदस्य अध्यक्ष

मिति .....................